# सूचना वा विज्ञापनको समानुपातिक वितरण प्रणाली सम्बन्धी निर्देशिका, २०६९

**प्रस्तावनाः** सरकारी क्षेत्रमा रहेको सूचना वा विज्ञापन सञ्चार माध्यमलाई समानुपातिक रुपमा उपलब्ध गराई सबै सञ्चार माध्यमहरुको समान विकास गर्ने, जनतालाई सरकारी सूचना सहजै उपलब्ध गराउने तथा सुशासन, लोकतन्त्र एवं गणतन्त्रको सुदृढीकरण समेत गर्ने उद्देश्यले सरकारी सूचना तथा विज्ञापन समानुपातिक रुपमा वितरणको व्यवस्था गर्न नेपाल सरकार (म.प.) ले यो निर्देशिका जारी गरेको छ।

१. संक्षिप्त नाम र प्रारम्भः (१) यो निर्देशिकाको नाम "सूचना तथा विज्ञापनको समानुपातिक वितरण प्रणाली सम्बन्धी निर्देशिका, २०६९" रहनेछ।

(२) यो निर्देशिका २०६९ साल चैत्र १ गते देखि लागू हुनेछ।

२. परिभाषाः (१) विषय वा प्रशंगले अर्को अर्थ नलागेमा यस निर्देशिकामा,-

(क) "विभाग" भन्नाले नेपाल सरकार, सूचना विभाग संझनु पर्छ।

(ख) "लोक कल्याणकारी विज्ञापन" भन्नाले कुनै आर्थिक लाभ वा स्वार्थ नराखी शैक्षिक, वैज्ञानिक, सामाजिक, साँस्कृतिक वा यस्तै चेतनामूलक विषयमा राज्यको तर्फबाट जनतालाई दिइने चेतना वा सन्देशमूलक जानकारी भन्ने बुझ्नुपर्छ।

(ग) "सूचना वा विज्ञापन" भन्नाले नेपाल सरकारको कुनै निकायबाट नेपाल भित्र सार्वजनिक रुपमा प्रकाशित वा प्रसारित कुनै वस्तु तथा सेवाको प्रबर्द्धनको लागि वा बिभिन्न किसिमका ठेक्कापट्टा, लिलाम बढावढ वा घटाघटको सूचना, पदपूर्ति सम्बन्धी सूचना वा यस्तै प्रकारका अन्य सूचना वा विज्ञापन संझनु पर्छ र सो शब्दले खण्ड (ख) बमोजिमको लोककल्याणकारी विज्ञापनलाई समेत जनाउनेछ।

(घ) "केन्द्रीय समन्वय समिति" भन्नाले दफा २० बमोजिमको केन्द्रीय समन्वय समिति सम्झनु पर्दछ।

(ङ) "जिल्ला समन्वय समिति" भन्नाले दफा २२ बमोजिमको जिल्ला समन्वय समिति सम्झनु पर्छ।

(च) "सञ्चार माध्यम" भन्नाले छापा, विद्युतीय वा अनलाइन सञ्चार माध्यम संझनु पर्छ र सो शब्दले विषयवस्तु सम्बद्ध लिफ्लेट, पाम्पलेट, पोष्टर, होर्डिङ बोर्डलाई समेत जनाउँछ र सो शब्दले व्यक्तिगत संगठनको जर्नल, सोभिनियर, वार्षिक मुखपत्र तथा प्रतिवेदनलाई जनाउने छैन।

(छ) "कोष" भन्नाले दफा २४ बमोजिमको पत्रकार एवं सञ्चारकर्मी कल्याणकोष भन्ने बुझ्नु पर्दछ।

(ज) "मन्त्रालय" भन्नाले सूचना तथा सञ्चार मन्त्रालय संझनु पर्छ।

(झ) "सूचना केन्द्र" भन्नाले विभाग अन्तर्गतको सूचना केन्द्र संझनु पर्छ।

(ञ) "कार्यालय" भन्नाले व्यवस्थापिका संसद, अदालत र संवैधानिक निकाय सो अन्तर्गतका कार्यालय लगायत नेपाल सरकारका अन्य सबै कार्यालय संझनु पर्छ।

(ट) "पत्रकार" भन्नाले विभागबाट पत्रकारको परिचयपत्र प्राप्त गरेको व्यक्ति संझनु पर्छ।

(ठ) "सञ्चारकर्मी" भन्नाले सञ्चारकर्मीको रुपमा विभागबाट प्रेस पास प्राप्त गरेको र सञ्चार माध्यमको प्रकाशन वा प्रसारणमा संलग्न पत्रकार, फोटोग्राफर, प्राविधिक तथा सो काममा प्रत्यक्ष रुपमा संलग्न व्यक्ति संझनु पर्छ। तर यो शब्दले सो प्रकाशन वा प्रसारणको प्रकाशक वा व्यवस्थापकलाई जनाउने छैन।

(ङ) "सञ्चार गृह" भन्नाले श्रमजीवि पत्रकार सम्बन्धी ऐन, २०५१ मा उल्लेख भए बमोजिमको सञ्चार गृह संझनु पर्छ ।

३. सूचना वा विज्ञापन विभाग मार्फत प्रकाशन वा प्रसारण गर्ने: यो निर्देशिका लागू भएपछि नेपाल सरकारका सबै कार्यालयले कुनै पनि सञ्चार माध्यम मार्फत प्रकाशन वा प्रसारण गर्नुपर्ने सूचना वा विज्ञापन विभाग मार्फत मात्र प्रकाशन वा प्रसारण गर्नुपर्नेछ । यस निर्देशिकामा अन्यथा व्यवस्था भएकोमा बाहेक यो निर्देशिका लागू भएपछि नेपाल सरकारको कुनै पनि कार्यालयले छुट्टै सूचना वा विज्ञापन प्रकाशन वा प्रसारण गर्ने छैन ।

तर देहायको सूचना वा विज्ञापनको हकमा यो निर्देशिका लागू हुने छैन,-

(१) सरोकारवाला व्यक्तिले खर्च व्यहोरी गर्ने हकदावी गर्ने सूचना जस्ता सूचना वा विज्ञापन ।

(२) अन्तर्राष्ट्रिय सञ्चार माध्यमबाट प्रकाशन वा प्रसारण हुने सूचना वा विज्ञापन ।

४. वार्षिक विज्ञापन योजना तयार गर्नुपर्ने: (१) नेपाल सरकारको प्रत्येक कार्यालयले वार्षिक कार्यक्रम तयार गर्दा सो वर्षभरिमा सो कार्यालयले प्रकाशन वा प्रसारण गर्नुपर्ने सूचना वा विज्ञापन सम्बन्धी छुट्टै वार्षिक विज्ञापन योजना तयार गरी वार्षिक कार्यक्रम साथ स्वीकृत गराउनु पर्नेछ ।

(२) उपदफा (१) बमोजिमको विज्ञापन योजनामा सूचना वा विज्ञापन प्रकाशन वा प्रसारण गर्नुपर्ने सञ्चार माध्यम तथा सो को लागत समेत खुलाइएको हुनुपर्नेछ ।

५. वजेट व्यवस्था: (१) अर्थ मन्त्रालयले दफा ४ बमोजिम स्वीकृत विज्ञापन योजनाको आधारमा प्रत्येक मन्त्रालय र अन्तर्गतको लागि सूचना वा विज्ञापनको निमित्त मन्त्रालयगत रुपमा आवश्यक बजेट छुट्याउनेछ ।

(२) उपदफा (१) बमोजिम बजेट छुट्याउँदा प्रत्येक मन्त्रालय र कार्यालयगत रुपमा सूचना वा विज्ञापनको लागि छुट्याइएको बजेट छुट्टै देखिने गरी अर्थ मन्त्रालयले आवश्यक व्यवस्था मिलाउनेछ ।

(३) प्रत्येक मन्त्रालयले मातहत कार्यालयले दफा ४ बमोजिम पेश गरेको वार्षिक विज्ञापन योजनाको आधारमा उपदफा (१) बमोजिम स्वीकृत बजेटलाई कार्यालयगत रुपमा बाँडफाँड गरी सो को जानकारी विभागलाई उपलब्ध गराउनु पर्नेछ ।

(४) दफा ४ बमोजिमको विज्ञापन योजनाको आधारमा सालबसाली बजेट थपघट हुन सक्नेछ ।

(५) कुनै योजना, परियोजना वा कार्यक्रम कार्यान्वयनको सिलसिलामा सूचना वा विज्ञापनको लागि रकम खर्च गर्नु पर्ने भए सम्बन्धित निकायले सो योजना, परियोजना वा कार्यक्रम अन्तर्गत सूचना वा विज्ञापनको लागि खर्च हुने रकम खुल्ने गरी योजना, परियोजना वा कार्यक्रमको लागत अनुमान तयार गरी कार्यान्वयन गर्नुपर्नेछ ।

६. विभागलाई विज्ञापन शीर्षकको बजेट उपलब्ध गराउने: (१) अर्थ मन्त्रालयले प्रत्येक मन्त्रालय र अन्तर्गतको निमित्त छुट्याइएको विज्ञापन शीर्षकको बजेट सोझै विभागको नाममा उपलब्ध गराउने छ ।

(२) वैदेशिक सहायता अन्तर्गत सञ्चालित आयोजना सम्बन्धी संझौतामा अन्यथा भएकोमा बाहेक त्यस्तो आयोजना अन्तर्गत सूचना वा विज्ञापनका लागि छुट्याइएको बजेट सो आयोजनाले विभागलाई उपलब्ध गराउनेछ ।

(३) यो निर्देशिका लागू भएपछि कुनै वैदेशिक आयोजना सम्बन्धी संझौता गर्दा सो आयोजना अन्तर्गत प्रकाशन वा प्रसारण गरिने सूचना वा विज्ञापन यस निर्देशिका बमोजिम प्रकाशन वा प्रसारण गर्ने गरी व्यवस्था गर्नुपर्नेछ ।

७. नपुग बजेट सम्बन्धित कार्यालयले व्यवस्था गर्नुपर्ने: (१) कुनै मन्त्रालय वा अन्तर्गत कार्यालयको निमित्त विज्ञापन शीर्षकमा छुट्याइएको रकम वार्षिक विज्ञापन योजनामा समावेश भएको सूचना वा विज्ञापन प्रकाशन वा प्रसारणको निमित्त बजेट नपुग भएमा त्यस्तो नपुग बजेट सम्बन्धित कार्यालयले नै व्यवस्था गर्नुपर्नेछ ।

(२) कुनै मन्त्रालय वा अन्तर्गतको कार्यालयको निमित्त उपदफा (१) बमोजिम बजेट नपुग हुने भएमा विभागले यथासीघ्र सो को जानकारी सम्बन्धित कार्यालयलाई दिनु पर्नेछ ।

८. बार्षिक विज्ञापन योजनामा नपरेको सूचना वा विज्ञापन प्रकाशन वा प्रसारण गर्ने: (१) कुनै मन्त्रालय वा अन्तर्गत कार्यालय वार्षिक विज्ञापन योजनामा नपरेको कुनै सूचना वा विज्ञापन प्रकाशन वा प्रसारण गर्नु परेमा कम्तीमा सम्बन्धित मन्त्रालयको सचिवस्तरबाट स्वीकृति लिई के कस्तो सञ्चार माध्यममा के कसरी प्रकाशन वा प्रसारण गर्ने भन्ने कुरा समेत खुलाई प्रकाशन वा प्रसारणको निमित्त विभागमा पठाउनु पर्नेछ ।

(२) उपदफा (१) बमोजिम पठाउँदा सो को निमित्त आवश्यक रकम समेत विभागलाई उपलब्ध गराउनु पर्नेछ । त्यसरी आवश्यक रकम उपलब्ध नगराइएमा विभागले त्यस्तो सूचना वा विज्ञापन प्रकाशन वा प्रसारण गर्ने छैन ।

९. विभागले बजेट बाँडफाँड सहित वार्षिक विज्ञापन कार्ययोजना तयार गर्ने: विभागले यस निर्देशिका बमोजिम प्रत्येक मन्त्रालय र अन्तर्गत प्रकाशन वा प्रसारण गरिने सूचना वा विज्ञापनको विवरण प्राप्त भएपछि सूचना वा विज्ञापन सम्बन्धी र लोककल्याणकारी विज्ञापन दुबैको छुट्टा छुट्टै देहायका विवरणहरु खुल्ने गरी बजेट बाँडफाँड सहित वार्षिक विज्ञापन कार्ययोजना तयार गरी सो को आधारमा सूचना वा विज्ञापन प्रकाशन वा प्रसारण गराउनेछ:-

(क) मन्त्रालय र अन्तर्गत सो वर्षभरिमा प्रकाशन वा प्रसारण गरिने सूचना वा विज्ञापन मन्त्रालयगत रुपमा,

(ख) सूचना वा विज्ञापन प्रकाशन वा प्रसारण हुने छापा, विद्युतीय, अनलाइन वा पाम्पलेट, होर्डिङ्ग बोर्ड वा यस्तै प्रकारका अन्य माध्यम,

(ग) सूचना वा विज्ञापन प्रकाशन वा प्रसारण हुने समय,

(घ) सूचना वा विज्ञापन राष्ट्रिय, क्षेत्रीय वा स्थानीय स्तर कुन स्तरमा प्रकाशन गरिने हो भन्ने कुरा,

(ङ) दफा २६ बमोजिमका आकस्मिक वा अत्यन्त जरुरी वा संवेदनशील सूचना वा विज्ञापन सम्बन्धमा,

(च) अन्य आवश्यक कुराहरु ।

१०. विभागलाई विज्ञापन उपलब्ध गराउनु पर्ने: (१) यस निर्देशिका बमोजिम विभागबाट सूचना वा विज्ञापन प्रकाशन वा प्रसारण गराउनु पर्ने प्रत्येक कार्यालयले सो विज्ञापन प्रकाशन वा प्रसारण गर्नु भन्दा कम्तीमा पन्ध्र दिन अगावै सो को विषयवस्तु र ढाँचा आफैले तयार गरी विभागलाई उपलब्ध गराउनु पर्नेछ ।

(२) उपदफा (१) बमोजिम उपलब्ध गराउने सूचना वा विज्ञापनको विषयवस्तु वा ढाँचा सो विज्ञापन प्रकाशन वा प्रसारण गराउने कार्यालयको प्रमुखबाट स्वीकृत भएको हुनुपर्नेछ ।

११. सूचना वा विज्ञापनको वर्गीकरण सम्बन्धी व्यवस्था: (१) सूचना वा विज्ञापन देहायको आधारमा वर्गीकरण गरी सोही आधारमा विज्ञापनको दररेट निर्धारण गरिनेछ:-

(क) सूचना वा विज्ञापनको प्रकृतिको आधारमा (लोककल्याणकारी, सरकारी विज्ञापन, सूचना)

(ख) सूचना वा विज्ञापन प्रकाशित गर्नुपर्ने समयका आधारमा (नियमित वा आकस्मिक विज्ञापन वा सूचना)

(ग) विज्ञापन प्रकाशित वा प्रसारित हुने क्षेत्रको आधारमा (राष्ट्रिय वा स्थानीय)

(२) सूचना वा प्रकाशन वा प्रसारण हुनुपर्ने क्षेत्र वा प्रकृतिको आधारमा देहाय बमोजिम वर्गीकरण गरिनेछः-

(क) नेपालबाट प्रकाशन वा प्रसारण हुने सञ्चार माध्यममा प्रकाशन वा प्रसारण हुने ग्लोबल टेण्डर वा त्यस्तै प्रकारका सूचना वा विज्ञापन,

(ख) प्रचलित ऐन कानूनले राष्ट्रियस्तरका सञ्चार माध्यमबाट प्रकाशन वा प्रशारण गरिने भनी किटिएका सूचना वा विज्ञापन,

(ग) सूचना वा विज्ञापनको प्रकृतिको आधारमा राष्ट्रव्यापी रुपमा जानकारी गराउनु पर्ने सूचना वा विज्ञापन,

(घ) दुई जिल्ला वा सो भन्दा बढी जिल्लासँग सरोकार राख्ने तर स्थानीय प्रकृतिका सूचना वा विज्ञापन,

(ङ) कुनै खास क्षेत्र वा कुनै खास क्षेत्रमा बस्ने समुदायको लागि केन्द्रित बाहेक अन्य प्रकारका लोककल्याणकारी विज्ञापन,

(च) राष्ट्रियस्तरका सेवा प्रदायक, निर्माण व्यवसायी एवं आपूर्तिकर्ता संलग्न हुनुपर्ने विषय क्षेत्रसँग सम्बन्धित विषय विज्ञापनहरु,

(छ) केन्द्रीय निकायसँग सम्बन्धित व्यापक प्रचार गर्नु पर्ने विषयहरु,

(ज) राष्ट्रव्यापी महत्व राख्ने सबै लोककल्याणकारी विज्ञापनहरु ।

१२. जिल्ला वा स्थानीयस्तरका सूचना वा विज्ञापनः देहाय बमोजिमका सूचना वा विज्ञापन जिल्ला वा स्थानीयस्तरका सूचना वा विज्ञापन मानिनेछन्:-

(क) सार्वजनिक खरीद ऐन, २०६४ तथा सार्वजनिक खरिद नियमावली, २०६४ बमोजिम शिलबन्दी दरभाउपत्रबाट हुने खरीद, निर्माण र अन्य सेवा सम्बन्धी,

(ख) स्थानीयस्तरका सेवा प्रदायक, निर्माण व्यवसायी एवं आपूर्तिकर्ता संलग्न भई स्थानीयस्तरबाट नै सम्पन्न गर्न सकिने विषय क्षेत्रसँग सम्बन्धित,

(ग) स्थानीयस्तरको धितो लिलाम विक्री,

(घ) पासपोर्ट हराएको सूचना,

(ङ) स्थानीयस्तरमा सरोकार राख्ने स्थानीयस्तरमा जानकारी गराएमा पुग्ने विषय,

(च) स्थानीय वस्तुस्थिति, भौगोलिक, साँस्कृतिक विषय एवं स्थानीय रुपमा शिक्षा, स्वास्थ्य, खानेपानी, पर्यटन जस्ता विषयसँग सम्बन्धित,

(छ) केन्द्रीय निकायसँग सम्बन्धित तर स्थानीयस्तरका सञ्चार माध्यममा जानकारी गराए पुग्ने किसिमका सूचना वा विज्ञापन ।

१३. समानुपातिक वितरणको लागि सञ्चार माध्यमको वर्गीकरणः (१) सूचना वा विज्ञापनको वितरण प्रत्येक सञ्चार माध्यमको वर्गीकरणको आधारमा समानुपातिक रुपमा गरिनेछ ।

(२) सूचना वा विज्ञापन समानुपातिक रुपमा उपलब्ध गराउने प्रयोजनको लागि सञ्चार माध्यमको वर्गीकरण सो सञ्चार माध्यमको प्रकाशन संख्या र पहुँचको क्षेत्र तथा जनसंख्याको लेखा परीक्षण गरी प्रतिवेदन तयार गरी सोही प्रतिवेदनको आधारमा गरिनेछ।

(३) यस दफा बमोजिम सञ्चार माध्यमको वर्गीकरण प्रेस काउन्सिल नेपालले गर्नेछ।

१४. सूचना वा विज्ञापन उपलब्ध गराउने तरिकाः विभागले दफा ३० बमोजिमको मापदण्ड बमोजिम प्रत्येक वर्गीकरणमा परेका सञ्चार माध्यमलाई सोही मापदण्ड बमोजिम सूचना वा विज्ञापन समानुपातिक रुपमा उपलब्ध गराउनेछः-

(क) छापा सञ्चार माध्यमलाई प्रत्येक अंक वा तोकिएको अवधिको लागि पृष्ठ संख्या निश्चित गरी,

(ख) रेडियो वा टेलिभिजनको लागि प्रत्येक दिन वा तोकिएको अवधिको लागि समयावधि निश्चित गरी,

(ग) पाम्पलेट, होर्डिङ्ग बोर्ड वा अन्य प्रकारका सञ्चार माध्यमको लागि त्यस्तो सञ्चार माध्यमको आकार, संख्या वा ठाउँ निश्चित गरी।

१५. सूचना वा विज्ञापनको दरः (१) विभागले प्रत्येक सूचना वा विज्ञापनको लागि फरक फरक प्रकृति र वर्गीकरणका सञ्चार माध्यमहरुका बीचमा सूचना वा विज्ञापनको दर फरक फरक तोक्न सक्नेछ।

(२) उपदफा (१) बमोजिम दर तोक्ने प्रयोजनको लागि विभागले समान प्रकृति र समान वर्गीकरणका सञ्चार माध्यमसँग सम्बन्धित संघ सँस्थासँग वार्ता गरी वा दफा १६ बमोजिम प्रतिस्पर्धा गराई सूचना वा विज्ञापनको दर निश्चित गर्न सक्नेछ।

१६. विज्ञापन एजेन्सी सम्बन्धी व्यवस्थाः (१) विभागले यस निर्देशिका बमोजिम सूचना वा विज्ञापन उपलब्ध गराउनको निमित्त दफा १५ बमोजिम प्रतिस्पर्धा गराउँदा विज्ञापन एजेन्सीहरु मार्फत प्रतिस्पर्धा गराउन सक्नेछ।

(२) उपदफा (१) बमोजिम विज्ञापन एजेन्सी मार्फत प्रतिस्पर्धा गराउँदा सञ्चार माध्यममा सूचना वा विज्ञापनको लागि आवश्यक पृष्ठ वा समय खुलाई सो को लागि देहायका आधारमा छुट्टा छुट्टै प्रतिस्पर्धा गराउन सकिनेछः-

(क) सञ्चार माध्यमको प्रकृति (छापा, विद्युतीय, अनलाइन वा अन्य),

(ख) सञ्चार माध्यम प्रकाशन हुने समय (दैनिक वा साप्ताहिक),

(ग) सञ्चार माध्यम प्रकाशनको स्वरुप (ब्रोडसीट, टेबल्वाइड),

(घ) सञ्चार माध्यमको वर्गीकरण,

(३) यस दफा बमोजिम प्रतिस्पर्धा गराउँदा विभागमा सूचिकृत विज्ञापन एजेन्सीलाई मात्र सहभागि गराइनेछ।

(४) विज्ञापन एजेन्सी सम्बन्धी अन्य व्यवस्था कार्यविधिमा उल्लेख भए बमोजिम हुनेछ।

१७. प्रकाशन वा प्रसारणको क्षमता वा क्षेत्र जानकारी गराउनु पर्नेः (१) प्रत्येक सञ्चार माध्यमले समय समयमा आफनो छपाई र वितरण, प्रसारणले ओगटेको क्षेत्र तथा प्रयोग गरिएको प्रविधिको वारेमा विभागलाई जानकारी गराउनु पर्नेछ।

(२) कुनै कारणले कुनै सञ्चार माध्यमको प्रकाशन र प्रशारण रोकिएको भएको भए विभागमा र सम्बन्धित सूचना केन्द्र तथा जिल्ला हुलाक कार्यालयमा शीघ्र जानकारी दिनुपर्नेछ।

(३) एफएम रेडियोले वाट क्षमता बढाई क्षमता बृद्धि गरेमा वा टेलिभिजनले प्रसारण क्षेत्र थप गरेमा वा छापा माध्यमले दैनिक वा साप्ताहिक प्रकाशन किसिम परिवर्तन गरेमा सो को जानकारी विभाग र स्थानीय सूचना केन्द्र र जिल्ला हुलाक कार्यालयलाई दिनु पर्नेछ ।

(४) यस निर्देशिका बमोजिम सूचना वा विज्ञापन उपलब्ध गराउने प्रयोजनको लागि उपदफा (३) बमोजिमको परिवर्तन र त्यस्तो किसिम परिवर्तनपछि गरिएको वर्गीकरण भएको लगत्तै पछिको आर्थिक वर्षदेखि लागू हुनेछ ।

(५) प्रत्येक सञ्चार माध्यमले आफ्नो प्रकाशनको संख्या, वितरण तथा प्रसारणले आफ्नो प्रसारणले ओगटेको क्षेत्र, जनसंख्या र पहुँचका सम्बन्धमा विश्वसनीय प्रमाण आफैले संलग्न गरी सो को विवरण विभाग समक्ष पेश गर्नु पर्नेछ ।

१८. <u>सूचना तथा विज्ञापन प्राप्त गर्न चाहने सञ्चार माध्यमहरुले पूरा गर्नुपर्ने शर्तहरुः</u> (१) यस निर्देशिका बमोजिम सूचना वा विज्ञापन प्रकाशन वा प्रसारण गर्ने सञ्चार माध्यमले नेपाल सरकारले सञ्चार माध्यममा प्रकाशन वा प्रकाशनको लागि सार्वजनिक गरेका नीति, कार्यक्रम, प्रगति तथा दैवी प्रकोप सम्बन्धी वा आपतकालिन सूचनाहरु अनिवार्य रुपमा निशुल्क प्रकाशन वा प्रसारण गर्नु पर्नेछ ।

(२) देहायको प्रकाशन देहायको क्षेत्रमा वितरण भएको हुनुपर्नेछः-

(क) राष्ट्रिय प्रकाशन भए कम्तीमा पाँचै विकास क्षेत्र र देशको पचास प्रतिशत जिल्लामा,

(ख) क्षेत्रीय प्रकाशन भए सो क्षेत्रका कम्तीमा पचास प्रतिशत जिल्लामा,

(ग) स्थानीय प्रकाशन भए सम्बन्धित जिल्लाका सबै नगरपालिका र कम्तिमा पचास प्रतिशत गाउँ विकास समितिमा ।

(३) यस निर्देशिका बमोजिम सूचना वा विज्ञापन प्रकाशन वा प्रसारण गर्न विद्युतीय सञ्चार माध्यम भए सो माध्यमले प्रशारणको अनुमति लिएको क्षेत्रमध्ये कम्तीमा पनि कुल जनसंख्या र कुल भौगोलिक क्षेत्रको पचास प्रतिशतमा सो प्रसारणको पहुँच भएको हुनुपर्दछ ।

(४) विद्युतीय सञ्चार माध्यम भए नियमित रुपमा प्रसारण भएको तीन वर्ष र छापा सञ्चार माध्यम भए कम्तीमा नियमित रुपमा प्रकाशन भएको तीन वर्ष पुगेपछि मात्र सूचना र विज्ञापन उपलब्ध गराइनेछ ।

(५) उपदफा (१), (२), (३) र (४) मा लेखिएको अतिरिक्त सूचना वा विज्ञापन प्रकाशन वा प्रसारण गर्ने सञ्चार माध्यमहरुले देहायका शर्त पालना गरेको हुनु पर्नेछः-

(क) संविधान, प्रचलित कानुन तथा पत्रकार आचार संहिताको पूर्ण पालना गरेको हुनुपर्नेछ ।

(ख) आफ्नो सञ्चार प्रतिष्ठानमा श्रमजीवी पत्रकार सम्बन्धी ऐनको पूर्ण कार्यान्वयन गरेको हुनुपर्नेछ ।

(ग) सञ्चार गृह लैंगिक हिंसारहित एवं लैंगिक मैत्री हुनुपर्नेछ ।

(घ) सञ्चार माध्यमहरु अनिवार्य रुपमा मूल्य अभिबृद्धि करमा दर्ता भएको हुनुपर्नेछ ।

(ङ) छापा माध्यममा प्रकाशित हुने सामग्रीमा कूल प्रकाशनको चालिस प्रतिशत र टेलिभिजन तथा सामुदायिक र सार्वजनिक रेडियोमा प्रसारण समयको बीस प्रतिशत भन्दा बढी विज्ञापनको नभएको हुनुपर्नेछ ।

(च) सञ्चार माध्यमहरुले नियमानुसार बुझाउनु पर्ने कर तथा शुल्क वा अन्य रकम तिरे बुझाएको हुनुपर्नेछ ।

(छ) प्रचलित कानुन बमोर्जिम नवीकरण गर्नुपर्ने भए नवीकरण गरेको गरी सो को निस्सा विभागमा पेश गरेको हुनु पर्नेछ ।

(ज) दफा २४ बमोजिमको पत्रकार तथा सञ्चारकर्मी कल्याण कोषको निमित्त नियमित रुपमा रकम जम्मा गरेको हुनुपर्नेछ ।

(झ) प्रत्येक सञ्चार माध्यमले वार्षिक सञ्चालन खर्चको विवरण स्वीकृत लेखा परीक्षकबाट जाँच गराई विभागमा पेश गर्नुपर्नेछ ।

(ञ) सूचना वा विज्ञापन प्रकाशन वा प्रसारण गर्दा सो सूचना वा विज्ञापन प्रकाशन वा प्रसारण गराउने निकायको नाम र सरकारी निशाना छाप सो सूचना वा विज्ञापनमा स्पष्ट रुपमा प्रकाशन वा प्रसारण गरेको हुनुपर्दछ ।

(ट) स्वीकृत ढाँचा, तरिका र समय बमोजिम प्रकाशन वा प्रसारण गरेको निस्सा सहितको बील भरपाई पेश गर्नुपर्नेछ ।

१९. सूचना वा विज्ञापन उपलब्ध नगराइने वा सेवा सुविधाबाट बञ्चित हुने : (१) कुनै सञ्चार माध्यम पत्रकार आचार संहिता उल्लंघन गरे वापत सजाय पाएको वा सचेत गराइएको भए सो भएको एक वर्षसम्म यस निर्देशिका बमोजिम सूचना वा विज्ञापन उपलब्ध गराइने छैन ।

(२) नैतिक पतन देखिने फौजदारी अभियोगमा अदालतबाट दोषी ठहर भएको व्यक्ति प्रकाशक वा सम्पादक भएको सञ्चार माध्यमलाई यस निर्देशिका बमोजिम सूचना वा विज्ञापन उपलब्ध गराइने छैन ।

(३) सूचना तथा विज्ञापन प्राप्त गर्ने सञ्चार माध्यमले शर्त बमोजिम विज्ञापन वा सूचना प्रकाशन वा प्रसारण गरे नगरेको वा दफा १८ बमोजिमका शर्तहरु पालना गरे नगरेको सम्बन्धमा विभागले नियमित अनुगमन गर्नेछ ।

(४) यसरी अनुगमनको क्रममा कुनै सञ्चार माध्यमले शर्त विपरित काम गरेको वा शर्त पालनाको लागि आवश्यक तदारुकता नअपनाएको पाइएमा विभागले सम्बन्धित सञ्चार माध्यमलाई सो बमोजिम गर्न गराउन समय तोकी लेखी पठाउने छ ।

(५) उपदफा (२) बमोजिम लेखि पठाउँदा पनि सो सञ्चार माध्यमले सो कुरा पालन नगरेमा त्यस्तो सञ्चार माध्यमलाई प्रचलित कानुन बमोजिम उपलब्ध हुने सेवा सुबिधा रोक लगाउनुका साथै यस निर्देशिका बमोजिम सूचना वा विज्ञापन समेत उपलब्ध गराइने छैन ।

२०. केन्द्रीय समन्वय समिति : (१) दफा ३० बमोजिमको मापदण्ड तथा कार्यविधि स्वीकृत गर्न, यस निर्देशिकाको कार्यान्वयनको निमित्त आवश्यक काम गर्न तथा निर्देशिकाको कार्यान्वयन भए नभएको अनुगमन गर्न तथा कार्यान्वयनमा देखिएका समस्या समाधान गर्न देहाय बमोजिमको समन्वय समिति रहनेछः-

| | | |
|---|---|---|
| (क) | मन्त्री वा राज्य मन्त्री, सूचना तथा सञ्चार | अध्यक्ष |
| (ख) | अध्यक्ष प्रेस काउन्सिल नेपाल | सदस्य |
| (ग) | सचिव, सूचना तथा सञ्चार मन्त्रालय | सदस्य |
| (घ) | सचिव, अर्थ मन्त्रालय | सदस्य |
| (ङ) | सचिव, प्रधानमन्त्री तथा मन्त्रिपरिषद्को कार्यालय | सदस्य |
| (च) | सचिव, राष्ट्रिय योजना आयोग | सदस्य |
| (छ) | अध्यक्ष, नेपाल पत्रकार महासंघ | सदस्य |
| (ज) | अध्यक्ष, राष्ट्रिय छापा माध्यम सञ्जाल | सदस्य |
| (झ) | अध्यक्ष, टेलिभिजन ब्रोडकाष्टर्स नेपाल | सदस्य |
| (ञ) | अध्यक्ष, ब्रोडकाष्टिङ एसोसिएसन अफ नेपाल | सदस्य |

(ट) अध्यक्ष, नेपाल सामुदायिक रेडियो प्रसारक संघ — सदस्य

(ठ) अध्यक्ष, नेपाल विज्ञापन संघ — सदस्य

(ड) अध्यक्ष, नेपाल मिडिया सोसाइटी — सदस्य

(ढ) श्रमजीवी पत्रकारहरुमध्येबाट सूचना तथा सञ्चार मन्त्रालयले तोकेको एकजना वरिष्ठ पत्रकार — सदस्य

(ण) महानिर्देशक, सूचना विभाग — सदस्य सचिव

(२) केन्द्रीय समन्वय समितिको वैठक आवश्यकतानुसार बस्नेछ ।

(३) केन्द्रीय समन्वय समितिको वैठक सम्बन्धी कार्यविधि केन्द्रीय समन्वय समिति आफैले निर्धारण गर्नेछ ।

(४) केन्द्रीय समन्वय समितिको सचिवालय विभागमा रहनेछ ।

२१. काठमाण्डौ उपत्यका समन्वय समितिः (१) दफा ३० बमोजिमको मापदण्ड तथा कार्यविधिको अधिनमा रही काठमाण्डौ उपत्यकामा सूचना तथा विज्ञापनलाई पारदर्शी तरिकाले समानुपातिक रुपमा वितरण गर्ने व्यवस्थाको लागि देहाय बमोजिमको काठमाण्डौ उपत्यका समन्वय समिति रहनेछ ।

(क) महानिर्देशक, सूचना विभाग — अध्यक्ष

(ख) नेपाल पत्रकार महासंघको अध्यक्षले तोकेको सो महासंघको केन्द्रीय सदस्य — सदस्य

(ग) उपत्यकास्थित सञ्चार माध्यमसँग सम्बन्धित सँस्थाका उपत्यकास्तरीय संघ सँस्थाका प्रमुख मध्येबाट अध्यक्षबाट नियुक्त चार जना — सदस्य

(ङ) उपत्यकास्थित सञ्चार माध्यममा कार्यरत श्रमजीवी पत्रकारहरु मध्येबाट उपत्यका समन्वय समितिले तोकेको एकजना — सदस्य

(च) प्रतिनिधि (उपसचिवस्तर), महालेखा नियन्त्रक कार्यालय — सदस्य

(च) निर्देशक, सूचना विभाग — सदस्य सचिव

(२) उपत्यका समन्वय समितिको वैठक आवश्यकतानुसार बस्नेछ ।

(३) उपत्यका समन्वय समितिले वैठक सम्बन्धी आफ्नो कार्यविधि आफै नियमित गर्न सक्नेछ ।

(४) उपत्यका समन्वय समितिले यो निर्देशिकाको कार्यान्वयन गर्दा कुनै समस्या परेमा केन्द्रीय समन्वय समिति समक्ष पेश गर्नु पर्नेछ ।

२२. जिल्ला समन्वय समितिः (१) दफा ३० बमोजिमको मापदण्ड तथा कार्यविधिको अधिनमा रही प्रत्येक जिल्लामा सूचना तथा विज्ञापनलाई पारदर्शी तरिकाले समानुपातिक रुपमा वितरण गर्ने व्यवस्थाको लागि देहाय बमोजिमको जिल्ला समन्वय समिति रहनेछ ।

(क) प्रमुख जिल्ला अधिकारी — अध्यक्ष

(ख) अध्यक्ष, पत्रकार महासंघ जिल्ला समिति — सदस्य

(ग) जिल्लास्थित सञ्चार माध्यमसँग सम्बन्धित सँस्थाका जिल्लास्तरीय संघ सँस्थाका प्रमुख मध्येबाट अध्यक्षबाट नियुक्त दुई जना — सदस्य

(घ) प्रतिनिधि जिल्ला विकास समिति — सदस्य

(ङ) जिल्लास्थित सञ्चार माध्यममा कार्यरत श्रमजीवी पत्रकारहरु मध्येबाट जिल्ला समन्वय समितिले तोकेको एकजना — सदस्य

(च) सूचना केन्द्र भएका जिल्लामा सूचना केन्द्रको प्रमुख र सो नभएका जिल्लाको हकमा जिल्ला हुलाक कार्यालयका प्रमुख — सदस्य सचिव

(२) जिल्ला समन्वय समितिको वैठक आवश्यकतानुसार बस्नेछ ।

(३) जिल्ला समन्वय समितिले वैठक सम्बन्धी आफ्नो कार्यविधि आफै नियमित गर्न सक्नेछ ।

(४) जिल्ला समन्वय समितिले यो निर्देशिकाको कार्यान्वयन गर्दा कुनै समस्या परेमा केन्द्रीय समन्वय समिति समक्ष पेश गर्नु पर्नेछ ।

२३. उपत्यकास्तरीय, जिल्लास्तरीय वा स्थानीयस्तरका सूचना वा विज्ञापन सम्बन्धी व्यवस्था: (१) यस निर्देशिका बमोजिम उपत्यकास्तरीय, जिल्लास्तरीय वा स्थानीयस्तरका सूचना वा विज्ञापनको बजेट दफा ९ बमोजिम विभागले स्वीकृत गरेको बाँडफाँड बमोजिम उपत्यकास्तरीय बजेट विभागको नाममा र जिल्ला वा स्थानीयस्तरको बजेटको हकमा सूचना केन्द्रको नाममा र सूचना केन्द्र नभएको जिल्लाको सम्बन्धित जिल्ला हुलाक कार्यालयलाई उपलब्ध गराइनेछ ।

(२) जिल्ला वा स्थानीय स्तरको सूचना वा विज्ञापनको प्रकाशन तथा प्रसारण सूचना केन्द्र भएको जिल्लाको हकमा सो केन्द्रले र सो नभएको जिल्लाको हकमा सम्बन्धित जिल्ला हुलाक कार्यालयले गर्नेछ ।

(३) जिल्लास्तरीय वा स्थानीयस्तरका सूचना वा विज्ञापन सम्बन्धी अन्य व्यवस्था दफा ३० बमोजिम स्वीकृत कार्यविधिमा तोकिए बमोजिम हुनेछ ।

२४. पत्रकार एवं सञ्चारकर्मी कल्याण कोष: (१) पत्रकार एवं सञ्चारकर्मीको पेशागत हक हित, सुरक्षा, व्यावसायिक क्षमता विकास र आपतकालीन उपचार सहायता उपलब्ध गराउने उद्देश्यले पत्रकार एवं सञ्चारकर्मी कल्याणकोष स्थापना गरिनेछ ।

(२) कोषमा देहायका रकम जम्मा गरिनेछ:-

(क) सूचना र विज्ञापन प्रकाशन वा प्रशारण गरे वापत सञ्चार माध्यमहरुलाई गरिने भुक्तानीमा कर कट्टा गरी बाँकी रहेको रकमको पाँच प्रतिशत कट्टा गरी राखिएको रकम,

(ख) समय समयमा नेपाल सरकारले कोषका लागि विनियोजन गरेको रकम, र

(ग) दाता वा अन्य स्रोतबाट प्राप्त भएको रकम ।

(३) कोष विभागमा रहनेछ ।

(४) कोषको सञ्चालनका सम्बन्धमा मन्त्रालयले अर्थ मन्त्रालयको सहमति लिई कार्यविधि बनाई लागू गर्नेछ ।

(५) सूचना वा विज्ञापन वापत भुक्तानी गर्ने प्रत्येक कार्यालयले उपदफा (२) को खण्ड (क) बमोजिम कट्टा गरेको रकम कोषमा जम्मा हुने गरी पठाउनु पर्नेछ ।

२५. नेपाल सरकारको स्वामित्वमा सञ्चालित सञ्चार माध्यम सम्बन्धी विशेष व्यवस्था: (१) यस निर्देशिकामा अन्यत्र जुनसुकै कुरा लेखिएको भए तापनि सूचना वा विज्ञापनको लागि यस निर्देशिका बमोजिम विभागलाई उपलब्ध हुने कूल रकमको तीस प्रतिशत रकम नेपाल सरकारको स्वामित्वमा सञ्चालित सञ्चार माध्यमलाई उपलब्ध गराइनेछ ।

(२) यस दफा बमोजिम नेपाल सरकारको स्वामित्वमा सञ्चार माध्यमहरुलाई उपलब्ध गराइने रकमको बाँडफाँड तथा अन्य कुराका सम्बन्धमा मन्त्रालयले कार्यविधि बनाई लागू गर्नेछ ।

२६. आकस्मिक वा अत्यन्त जरुरी वा संवेदनशील सूचना वा विज्ञापन सम्बन्धी व्यवस्था : (१) प्राकृतिक प्रकोप, विपत्ति, महामारी रोकथाम, संक्रामक पशुपन्छिजन्य रोग, सुरक्षासँग सम्बन्धित अति संवेदनशील सूचना तथा प्रेस विज्ञप्तिहरु र तत्काल प्रकाशन वा प्रशारण गर्नु पर्ने भनी सम्बन्धित मन्त्रालयको सचिवले निर्णय गरी पठाएका सूचना वा विज्ञापन आकस्मिक वा अत्यन्त जरुरी वा संवेदनशील सूचना वा विज्ञापन मानिने छन् ।

(२) उपदफा (१) बमोजिमका सूचना वा विज्ञापन सम्बन्धित कार्यालयले सोझै सरकारी स्वामित्वको सञ्चार माध्यममा प्रकाशन वा प्रसारणको लागि पठाई विभागलाई सो को जानकारी दिनेछ ।

(३) सूचना वा विज्ञापनको विषयवस्तुको संवेदशीलताको कारण कुनै खास प्रकारको सूचना वा विज्ञापन कुनै खास प्रकारको सञ्चार माध्यममा प्रकाशन वा प्रसारण गर्नुपर्ने भएमा सम्बन्धित मन्त्रालयले सोही बमोजिम निर्णय गरी पठाएमा विभागले त्यस्तो सूचना वा विज्ञापन सोही प्रकारको सञ्चार माध्यममा प्रकाशन वा प्रसारण गर्नुपर्नेछ ।

२७. लेखा सम्बन्धी व्यवस्था : (१) यस निर्देशिका बमोजिम प्राप्त हुने बजेट तथा खर्चको लागि विभागले छुट्टै खाता खोली सञ्चालन गर्नेछ ।

(२) सूचना वा विज्ञापन प्रकाशन प्रशारण सम्बन्धी आयव्ययको विवरण पारदर्शी रुपमा राख्ने व्यवस्था मिलाउनु पर्नेछ ।

(३) विभागले सञ्चार माध्यमहरुले सूचना वा विज्ञापन प्रकाशन वा प्रसारण गरे वापत प्राप्त गरेको रकम सञ्चार माध्यमको नाम सहित सार्वजनिक गर्नेछ ।

(४) सञ्चार माध्यमले आफूले प्रकाशन वा प्रसारण गरेको सूचना वा विज्ञापनको भुक्तानीको निमित्त पेश गर्दा सो सूचना वा विज्ञापन प्रकाशन वा प्रसारण भएको कुरा आफैले पुष्टी गरी सो सम्बन्धी निस्सासाथ पेश गर्नु पर्नेछ ।

२८. विज्ञापन प्रकाशन प्रशारण सम्बन्धी समय तालिकाः (१) विभागले सूचना वा विज्ञापन प्रकाशन प्रशारण सम्बन्धी समय तालिका (क्यालेण्डर) बनाउनेछ ।

(२) सञ्चार माध्यमले सूचना वा विज्ञापन समय तालिका अनुरुप तोकिएको आकार, स्थान, समय र पटक प्रकाशन र प्रशारण गर्नुपर्नेछ ।

(३) विभाग र सम्बन्धित सूचना केन्द्र तथा जिल्ला हुलाक कार्यालयले उपदफा (१) बमोजिमको समय तालिका सार्वजनिक गर्नेछ ।

२९. जनशक्ति थप गर्नेः यो निर्देशिकाको कार्यान्वयन गर्नको लागि विभाग तथा सूचना केन्द्रहरुमा हाल भैरहेको जनशक्तिमा अनुसूचीमा तोकिए बमोजिमको जनशक्ति थप गरिनेछ ।

३०. कार्यविधि र मापदण्ड बनाउनेः (१) विभागले यस निर्देशिकाको अधीनमा रही यस निर्देशिकाको कार्यान्वयन तथा सूचना वा विज्ञापन तयार गर्ने संकलन वा वितरण गर्ने, सो को भुक्तानी गर्ने आदि विषयमा सम्बन्धित सरोकारवालाहरुसँग आवश्यक परामर्श गरी कार्यविधि बनाई केन्द्रीय समन्वय समितिबाट स्वीकृत गराई लागू गर्नेछ ।

(२) विभागले सञ्चार माध्यमको वर्गीकरण तथा सूचना वा विज्ञापन वितरणको आधार सम्बन्धमा मापदण्ड बनाई केन्द्रीय समन्वय समितिबाट स्वीकृत गराई लागू गर्नेछ ।

(३) केन्द्रीय समन्वय समितिले जिल्ला वा स्थानीयस्तरमा विज्ञापन वितरण गर्ने विधि तथा अन्य कुराका सम्बन्धमा उपदफा (१) र (२) बमोजिमको कार्यविधि तथा मापदण्डमा व्यवस्था गरिनेछ ।

(४) उपदफा (१) बमोजिम स्वीकृत कार्यविधि तथा उपदफा (२) बमोजिम स्वीकृत मापदण्ड विभागले सार्वजनिक गर्नेछ ।

(५) उपदफा (१) बमोजिम स्वीकृत मापदण्ड यस निर्देशिकाको कार्यान्वयन गर्ने सबै निकाय तथा सञ्चार माध्यमले पालना गर्नु पर्नेछ ।

३१. वार्षिक तथा चौमासिक प्रतिवेदन पेश गर्नुपर्नेः (१) विभागले सूचना तथा विज्ञापन सम्बन्धी वार्षिक प्रतिवेदन मन्त्रालय मार्फत नेपाल सरकारमा पेश गर्नुपर्नेछ ।

(२) जिल्ला समन्वय समितिले आफ्नो चौमासिक प्रगति प्रतिवेदन विभागमा पठाउनु पर्नेछ ।

(६) विभाग, सूचना केन्द्र तथा जिल्ला हुलाक कार्यालयले प्रत्येक महिना सूचना वा विज्ञापन प्रकाशन वा प्रसारण गरे वापत सञ्चार माध्यमलाई दिइएको भुक्तानीको विवरण आफ्नो वेवसाइटमा राख्नु पर्नेछ । त्यसरी आफ्नो वेव साइट नभएको कार्यालयको विवरण विभागले आफ्नो वेवसाइटमा राख्नु पर्नेछ ।

३२. इ-विडिङ्गमा बाधा नपर्ने: यस निर्देशिकामा लेखिएको कुनै कुराले सरकारी निकायहरुलाई ई–विडिङ्ग गर्न वाधा पर्ने छैन ।

३३. अभिलेख राख्नु पर्ने: यस निर्देशिका बमोजिम सूचना वा विज्ञापन प्रकाशन वा प्रसारण गर्ने प्रत्येक सञ्चार माध्यमले आफूले प्रकाशन वा प्रसारण गरेको सूचना वा विज्ञापनको अभिलेख कम्तीमा एक वर्षसम्म सुरक्षित गरिराख्नु पर्नेछ ।

३४. विभागले सोझै सम्पर्क गर्न सक्ने: विभागले यस निर्देशिकाको कार्यान्वय गर्ने सिलसिलामा सम्बन्धित निकायसँग सोझै सम्पर्क गर्न सक्नेछ ।

३५. प्रोत्साहन उपलब्ध गराउने: विभागले यस निर्देशिकाको कार्यान्वयन गर्दा विभाग, सूचना केन्द्र र जिल्ला हुलाक कार्यालयका कर्मचारीलाई कार्यसम्पादनमा आधारित प्रोत्साहन उपलब्ध गराउने छ ।

३६. तत्काल वर्गीकरणमा नपरेमा सञ्चार माध्यम सम्बन्धी विशेष व्यवस्था: यो निर्देशिका लागू हुँदाका बखत तत्काल वर्गीकरणमा नपरेका सञ्चार माध्यमको हकमा विभागले प्रेस काउन्सिलको सिफारिशमा विशेष व्यवस्था गरी सो बमोजिम सूचना वा विज्ञापन वितरण गर्नेछ ।

३७. वैठक भत्ता तथा प्रशासनिक खर्च: (१) यस निर्देशिका बमोजिम गठन हुने केन्द्रीय समन्वय समिति, जिल्ला समन्वय समिति तथा गठन हुने उपसमिति वा कार्यदलका अध्यक्ष तथा सदस्यहरुले मन्त्रालयले स्वीकृत गरे बमोजिमको वैठक भत्ता प्राप्त गर्नेछन् ।

(२) उपदफा (१) बमोजिमको वैठक भत्ता तथा यस निर्देशिकाको कार्यान्वयनका लागि आवश्यक अन्य प्रशासनिक खर्चको लागि यस निर्देशिका बमोजिम प्राप्त हुने कूल बजेटको एक प्रतिशतमा ननाघ्ने गरी मन्त्रालयले स्वीकृत गरे बमोजिमको रकम छुट्याइने छ ।

३८. चालू आर्थिक वर्ष सम्बन्धी व्यवस्था: (१) चालू आर्थिक वर्षको हकमा मन्त्रालय वा अन्तर्गत कार्यालयले आफूले प्रकाशन वा प्रसारण गर्नुपर्ने सूचना वा विज्ञापन यस निर्देशिका बमोजिम तयार गरी सो को लागि लाग्ने रकम समेत त्यस्तो सूचना वा विज्ञापन प्रकाशन वा प्रसारण गर्नुभन्दा तीस दिन अगावै विभागमा उपलब्ध गराउनु पर्नेछ ।

(२) विभागले यस आर्थिक वर्षमा सूचना वा विज्ञापन उपलब्ध गराउँदा यस निर्देशिकामा लेखिएका कुनै कुरा कार्यान्वयन नसकिने भएमा वा कुनै विशेष व्यवस्था गर्नुपर्ने भएमा मन्त्रालयको स्वीकृति लिई गर्न सक्नेछ ।

३९. बाधा अडकाउ फुकाउने सम्बन्धी व्यवस्था : सूचना तथा विज्ञापन समानुपातिक वितरण कार्यमा कुनै बाधा अडकाउ परेमा केन्द्रीय समन्वय समितिले त्यस्तो बाधा अडकाउ फुकाउन सक्नेछ ।

# अनुसूची

(क) सूचना विभाग तर्फः-

| | | |
|---|---|---|
| (१) | उपसचिव ,प्रशासन- रा.प. द्वितीय | १ एक |
| (२) | उपसचिव ,लेखा- रा.प. द्वितीय | १ एक |
| (३) | शाखा अधिकृत, प्रशासन- रा.प. तृतीय | २ दुई |
| (४) | शाखा अधिकृत, कानून- रा.प. तृतीय | १ एक |
| (५) | शाखा अधिकृत, लेखा- रा.प. तृतीय | १ एक |
| (६) | कम्प्यूटर अधिकृत, विविध- रा.प. तृतीय | १ एक |
| (७) | नायब सुब्बा, प्रशासन -रा.प.अनं प्रथम | २ दुई |
| (८) | लेखापाल, लेखा -रा.प.अनं प्रथम | २ दुई |
| (९) | कम्प्यूटर अपरेटर, विविध- रा.प.अ.नं प्रथम | २ दुई |
| (१०) | हलुका सवारी चालक | १ एक |
| (११) | कार्यालय सहयोगी, श्रेणी विहिन | २ दुई |

(ख) सूचना केन्द्र तर्फः पाँच सूचना केन्द्रका लागि

| | | |
|---|---|---|
| (१) | शाखा अधिकृत प्रशासन -रा.प. तृतीय | १ एक |
| (२) | लेखापाल, लेखा -रा.प.अनं प्रथम | ५ पाँच |
| (३) | कम्प्यूटर अपरेटर, विविध- रा.प.अ.नं प्रथम | ५ पाँच |